# नेपाल राष्ट्र बैंक मनिचेञ्जर विनियमावली, २०६७

प्रथम संशोधन २०६८।९।५
दोस्रो संशोधन २०७०।११।२८
तेस्रो संशोधन २०७१।११।४


नेपाल राष्ट्र बैंक
केन्द्रीय कार्यालय
विदेशी विनिमय व्यवस्थापन विभाग
२०६७

# नेपाल राष्ट्र बैंक मनिचेञ्जर विनियमावली, २०६७

विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९ को दफा ३ बमोजिम विदेशी विनिमय कारोवार गर्ने इजाजतपत्र लिई मनिचेञ्जरको रुपमा काम गर्ने व्यक्ति, फर्म, कम्पनी वा संस्थाको प्रयोजनको लागि नेपाल राष्ट्र बैंकको सञ्चालक समितिले सोही ऐनको दफा १२ ले दिएको अधिकार प्रयोग गरी देहायका विनियमहरू बनाएको छ ।

## परिच्छेद - १
## प्रारम्भिक

**१. संक्षिप्त नाम र प्रारम्भ :**

(१) यी विनियमहरूको नाम “नेपाल राष्ट्र बैंक मनिचेञ्जर विनियमावली, २०६७” रहेको छ ।

(२) यो विनियमावली तुरुन्त प्रारम्भ हुनेछ ।*

**२. परिभाषा: विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस विनियमावलीमा,-**

(क) “ऐन” भन्नाले विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९ सम्झनु पर्छ ।

(ख) “राष्ट्र बैंक” भन्नाले नेपाल राष्ट्र बैंक ऐन, २०५८ बमोजिम स्थापना भएको नेपाल राष्ट्र बैंक सम्झनु पर्छ ।

(ग) “विभाग” भन्नाले राष्ट्र बैंकको विदेशी विनिमय व्यवस्थापन विभाग सम्झनु पर्छ ।

(घ) “बैंक” भन्नाले बैंक तथा वित्तीय संस्था सम्बन्धी ऐन, २०६३ को दफा ४७ को उपदफा (१) बमोजिमको वित्तीय कारोवार गर्न संस्थापना गरिएको सङ्गठित संस्था सम्झनु पर्छ ।

(ङ) “वित्तीय संस्था” भन्नाले बैंक तथा वित्तीय संस्था सम्बन्धी ऐन, २०६३ को दफा ४७ को उपदफा (२), (३) वा (४) बमोजिमको कारोबार गर्न संस्थापना भएको संगठित संस्था सम्झनु पर्छ । सो शब्दले विकास बैङ्क, वित्त कम्पनी वा लघु वित्त विकास बैङ्क समेतलाई जनाउँछ ।

(च) “मनिचेञ्जर” भन्नाले ऐनको दफा ३ को उपदफा (१) बमोजिम विदेशी विनिमय कारोवार गर्न राष्ट्र बैंकबाट मनिचेञ्जरको इजाजतपत्र प्राप्त व्यक्ति, फर्म, कम्पनी वा संस्था सम्झनु पर्छ ।

(छ) “कारोवार” भन्नाले ऐनको दफा ३ को उपदफा (३) बमोजिम राष्ट्र बैंकले तोकिदिएको विदशी मुद्रा खरीद वा खरीद तथा बिक्री गर्ने दुवै कामलाई सम्झनु पर्छ ।

(ज) “सञ्चालक” भन्नाले मनिचेञ्जरको कारोवार गर्न प्राइभेट फर्म रजिष्ट्रेशन ऐन, २०१४ वा साझेदारी ऐन, २०२० वा कम्पनी ऐन, २०६३ बमोजिम फर्म वा कम्पनी दर्ता गरी सो फर्म वा कम्पनी सञ्चालन गर्ने व्यक्ति वा व्यक्तिहरूलाई सम्झनु पर्छ ।

(झ) “विदेशी मुद्रा” भन्नाले नेपाली मुद्रा बाहेकका अन्य मुद्रा सम्झनुपर्छ र सो शब्दले अन्तर्राष्ट्रिय मुद्रा कोषबाट रकम झिक्ने विशेषाधिकार (स्पेशल ड्रइङ्ग राइट्स), एशियन करेन्सी युनिट, युरोपियन करेन्सी युनिट, तथा राष्ट्र बैंकले आवश्यकता अनुसार सार्वजनिक सूचना प्रकाशन र प्रसारणगरी तोकिदिएको अन्य उपकरण समेतलाई जनाउँछ ।

(ञ) “परिवर्त्य विदेशी मुद्रा” भन्नाले राष्ट्र बैंकले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी परिवर्त्य विदेशी मुद्रा भनी तोकिदिएको विदेशी मुद्रा सम्झनु पर्छ ।

(ट) “इजाजतपत्र” भन्नाले राष्ट्र बैंकले विदेशी विनिमयमा कारोवार गर्ने मनिचेञ्जर फर्म वा कम्पनीलाई जारी गरेको इजाजतपत्र सम्झनु पर्छ ।

* सञ्चालक समितिको मिति २०६७।५।१० मा बसेको बैठकबाट पारित भई सोही मिति देखि लागू भएको ।

## परिच्छेद - २
## इजाजतपत्र प्रदान गर्ने कार्यविधि

**३. निवेदन लिने :**

(१) राष्ट्र बैंकले देहाय बमोजिमको प्रकृया अपनाई कम्पनी रजिष्ट्रारको कार्यालयमा[१] दर्ता भएका कम्पनीलाई इजाजतपत्र दिन सक्नेछ :-

(क) मनिचेञ्जर कारोवार गर्ने क्षेत्र किटान गरी निवेदन आव्हान गरेर, वा

(ख) मनिचेञ्जर कारोवार गर्न पाउँ भनी प्राप्त भएको निवेदनको आधारमा ।

(२) उपविनियम (१) बमोजिम देहायको योग्यता पुगेका मनिचेञ्जरको कारोवार गर्न इच्छुक कम्पनीका सञ्चालक/संस्थापकले यसै विनियमावलीको अनुसूची-१ बमोजिमको ढाँचामा विभागमा वा आफूलाई पायक पर्ने राष्ट्र बैंकको उपत्यका बाहिरका कार्यालयमा निवेदन दिनु पर्नेछ[२] :-

(क) कम्पनीका संचालक/संस्थापक नेपाली नागरिक हुनु पर्नेछ ।

(ख) ऋण तिर्न नसकी साहुको दामासाहीमा नपरेको हुनु पर्नेछ ।

(ग) बैंक वा वित्तीय संस्थासंगको कुनै कारोबारमा कालोसूचीमा नरहेको हुनु पर्नेछ ।

(घ) प्रचलित कानून बमोजिम कर तिर्नु पर्ने दायित्व भई त्यस्तो कर चुक्ता गरेको हुनु पर्नेछ ।

(ङ) कम्पनीका संचालक/संस्थापक नैतिक पतन देखिने फौज्दारी कसूरमा अदालतबाट सजाँय पाएको भए त्यस्तो सजाय भुक्तान भएको मितिले पाँच वर्ष पुगेको हुनु पर्नेछ ।

(च) कम्पनीका संचालक/संस्थापक भ्रष्टाचार वा ठगीको कसूरमा अदालतबाट सजाँय नपाएको हुनु पर्नेछ ।

(छ) कम्पनीका संचालक/संस्थापक कुनै सरकारी, सार्वजनिक वा बैंक वा वित्तीय संस्थाको सेवाको पदमा बहाल नरहेको हुनु पर्नेछ ।

(ज) निवेदक कम्पनीको संस्थापक/संचालक बैंक तथा वित्तीय संस्थाको काम कारवाहीमा बेइमानी वा बदनियत नगरेको हुनु पर्नेछ ।

**४. इजाजतपत्रको वार्षिक शुल्क सम्बन्धी व्यवस्था :** मनिचेञ्जर कारोवारको लागि राष्ट्र बैंकबाट इजाजतपत्र प्राप्त गर्न देहाय बमोजिमको वार्षिक शुल्क राष्ट्र बैंकमा बुझाउनु पर्नेछ :-

(क) भारतीय रूपैयाँ खरीद बिक्री कारोवारका लागि दुई हजार रूपैयाँ ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारका लागि तीन हजार रूपैयाँ ।

(ग) खण्ड (क) र (ख) बमोजिमका दुवै कारोवारका लागि पाँच हजार रूपैयाँ ।

(घ) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा समेत प्रदान गर्ने कारोवारका लागि थप दुई हजार रूपैयाँ ।

**५. इजाजतपत्रको लागि धरौटी सम्बन्धी व्यवस्था:**

(१) मनिचेञ्जर कारोवारको लागि इजाजतपत्र प्राप्त गर्न देहाय बमोजिमको धरौटी राष्ट्र बैंकमा बुझाउनु पर्नेछ :-

(क) भारतीय रूपैयाँ खरीद बिक्री कारोवारका लागि एक लाख रूपैयाँ ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारका लागि पाँच लाख रूपैयाँ ।

(ग) खण्ड (क) र (ख) बमोजिमको दुवै कारोवारका लागि छ लाख रूपैयाँ ।

---

[१] तेस्रो संशोधनबाट मिलाइएको ।

[२] तेस्रो संशोधनबाट मिलाइएको ।

(घ) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा समेत प्रदान गर्ने कारोवारका लागि थप दुई लाख रूपैयाँ ।

(२) उपविनियम (१) बमोजिमको धरौटी बैंक जमानतको रूपमा समेत राख्न सकिनेछ । यस्तो बैंक जमानत कम्तीमा १८ (अठार) महिनाको हुनु पर्नेछ ।[३]

(३) उपविनियम (१) मा जुनसुकै कुरा लेखिएको भएता पनि यो विनियमावली लागू हुनु पूर्व इजाजतपत्र प्राप्त गरी सकेका मनिचेञ्जरहरूको हकमा उपविनियम (१) मा उल्लिखित धरौटी सम्बन्धी व्यवस्था २०६९ साउन एक गतेदेखि लागू हुनेछ ।

**६. नगद धरौटी सम्बन्धी व्यवस्था :**

(१) मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्र प्राप्त गर्न विनियम ५ बमोजिमको धरौटीको अतिरिक्त राष्ट्र बैंकको धरौटी खातामा देहाय बमोजिमको नगद धरौटी राख्नु पर्नेछ :-

(क) भारतीय रूपैयाँ खरीद बिक्री कारोवारका लागि पच्चीस हजार रूपैयाँ ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारका लागि पचास हजार रूपैयाँ ।

(ग) खण्ड (क) र (ख) बमोजिमको दुवै कारोवारका लागि पचहत्तर हजार रूपैयाँ ।

(घ) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधाका लागि परिवर्त्य विदेशी मुद्रा बिक्री गर्ने कारोवारका लागि थप पचास हजार रूपैयाँ ।

(२) उपविनियम (१) मा जुनसुकै कुरा लेखिएको भएता पनि यो विनियमावली लागू हुनु पूर्व इजाजतपत्र प्राप्त गरी सकेका मनिचेञ्जरहरूको हकमा उपविनियम (१) मा उल्लिखित नगद धरौटी सम्बन्धी व्यवस्था २०६९ साउन एक गतेदेखि लागू हुनेछ ।

(३) उपविनियम (१) बमोजिम राखेको धरौटी रकम विनियम १८ को उपविनियम (२) वा विनियम १९ बमोजिम मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्र रद्द भए पश्चात वा मनिचेञ्जर कारोवार बन्द गरी इजाजतपत्र खारेज गर्ने निवेदन प्राप्त भए पश्चात फिर्ता माग गरेमा मनिचेञ्जरको कारोवार बन्द गर्न प्रकाशित गरेको सूचना वापतको रकम कट्टा गरी बाँकी रकम मात्र फिर्ता गरिने छ ।

**७. इजाजतपत्र प्रदान गर्ने :**

(१) विनियम ३ को उपविनियम (२) बमोजिम पर्न आएको निवेदन उपर छानविन गरी राष्ट्र बैंकले मनिचेञ्जरको इजाजतपत्र प्रदान गर्न उपयुक्त देखिएका फर्म, वा कम्पनीलाई अनुसूची-२ बमोजिमको ढाँचामा सैद्धान्तिक सहमतिपत्र प्रदान गर्नेछ ।

(२) उपविनियम (१) बमोजिम सहमतिपत्र प्राप्त गरेपछि निवेदकले उक्त सहमतिपत्रमा उल्लिखित सम्पूर्ण प्रकृया पूरा गरी पैंतिस दिनभित्र राष्ट्र बैंकलाई लिखित जानकारी दिनु पर्नेछ ।

(३) उपविनियम (२) बमोजिमको जानकारी प्राप्त भएपछि स्थलगत निरीक्षण गर्दा उपयुक्त देखिएमा राष्ट्र बैंकले त्यस्ता फर्म वा कम्पनीलाई अनुसूची-३ बमोजिमका शर्तको अधीनमा रही मनिचेञ्जरको कारोवार गर्न अनुसूची-४ बमोजिमको ढाँचामा इजाजतपत्र प्रदान गर्न सक्नेछ । यस्तो इजाजतपत्र प्रदान गर्दा राष्ट्र बैंकले निवेदकले माग गरेको स्थानको सट्टामा अन्य उपयुक्त स्थानमा मनिचेञ्जरको कारोवार गर्ने गरी इजाजतपत्रको लागि पहल गर्न आवश्यक निर्देशन समेत दिन सक्नेछ ।

(४) उपविनियम (३) बमोजिम प्रदान गरिने इजाजतपत्रहरू देहाय बमोजिमका हुनेछन्:-

(क) भारतीय रूपैयाँको खरीद र बिक्री कारोवार गर्ने ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवार मात्र गर्ने ।

---

[३] तेस्रो संशोधनबाट मिलाइएको ।

(ग) परिवर्त्य विदेशी मुद्राको खरीद गरी विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा वापत परिवर्त्य विदेशी मुद्रा बिक्री गर्ने ।

(घ) खण्ड (क) र (ख) बमोजिमका दुवै कारोवार गर्ने तथा खण्ड (क), (ख) र (ग) बमोजिमका तीनवटै कारोवार गर्ने ।

(५) मनिचेञ्जरलाई इजाजतपत्र प्रदान गर्नु अघि निवेदक फर्म/कम्पनीका प्रोप्राइटर वा साझेदार वा सञ्चालक कर्जा सूचना केन्द्रको कालो सूचीमा परे/नपरेको जानकारी लिई नपरेको भएमा मात्र उपत्यका बाहिरका कार्यालयको कार्य क्षेत्रका हकमा सम्बन्धित कार्यालयले निवेदन लिने र सो को सिफारिशमा औचित्यता र उपयुक्तता हेरी विभागले विनियम ४ बमोजिमको वार्षिक शुल्क लिई इजाजतपत्र प्रदान गर्नेछ ।

## परिच्छेद - ३
## पुँजी सम्बन्धी व्यवस्था

**८. पुँजी सम्बन्धी व्यवस्था :**

(१) विनियम ३ को उपविनियम (१) बमोजिम निवेदन दिने फर्म वा कम्पनीले मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्र प्राप्त गर्न देहाय बमोजिमको न्यूनतम चुक्ता पुँजी कायम गर्नु पर्नेछ :-

(क) भारतीय रूपैयाँ खरीद बिक्री कारोवारका लागि पाँचलाख रूपैयाँ ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारका लागि दशलाख रूपैयाँ ।

(ग) खण्ड (क) र (ख) बमोजिमका दुवै कारोवारका लागि पन्ध्र लाख रूपैयाँ ।

(घ) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा प्रदान गर्ने कारोवारका लागि थप पाँच लाख रूपैयाँ ।

(२) उपविनियम (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि काठमाडौँ उपत्यका बाहिरका राष्ट्र बैंकले तोकेका ग्रामीण तथा दुर्गम क्षेत्रहरूको हकमा उल्लिखित चूक्ता पूँजीको कम्तिमा आधा चुक्ता पूँजी कायम गर्नु पर्नेछ ।

(३) उपविनियम (१) मा जुनसुकै कुरा लेखिएको भएता पनि यो विनियमावली लागू हुनु पूर्व इजाजतपत्र प्राप्त गरिसकेका मनिचेञ्जरहरूको हकमा यो उपविनियममा उल्लिखित चुक्ता पुँजी सम्बन्धी व्यवस्था २०६९ साल साउन एक गते देखि लागू हुनेछ ।

## परिच्छेद - ४
## मनिचेञ्जरको काम, कर्तव्य

**९. मनिचेञ्जर कारोवार :** मनिचेञ्जरको कारोवार गर्न इजाजतपत्र प्राप्त फर्म वा कम्पनीले देहाय बमोजिमका कामहरू मात्र गर्न पाउने छन् :-

(क) भारतीय रूपैयाँमा कारोवार गर्न इजाजतपत्रप्राप्त फर्म वा कम्पनीले सो मुद्राको खरीद तथा बिक्री दुवै गर्न सक्नेछन् ।

(ख) परिवर्त्य विदेशी मुद्रा कारोवार गर्न इजाजतपत्र प्राप्त फर्म वा कम्पनीले त्यस्तो मुद्रा खरीद मात्र गर्न सक्नेछन् ।

(ग) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा वापत परिवर्त्य विदेशी मुद्रा बिक्री गर्न इजाजतपत्र प्राप्त फर्म वा कम्पनीले सो वापत परिवर्त्य विदेशी मुद्रा बिक्री गर्न सक्नेछन् ।

(घ) मनिचेञ्जरले खरीद गरेको परिवर्त्य विदेशी मुद्रा बैंक वा राष्ट्र बैंकमा बुझाउनु पर्नेछ ।

(ङ) खण्ड (घ) बमोजिम मनिचेञ्जरले बुझाउन ल्याएको परिवर्त्य विदेशी मुद्रा खरीद गर्दा राष्ट्र बैंकले यात्रु चेकमा नियमानुसार लाग्ने शुल्क कटाई र नगदमा प्रचलित विनिमय दरमा राष्ट्र बैंकबाट निर्धारित इजाजतपत्र प्राप्त (इ.प्रा.) कमिशन कट्टा गरी खरीद गर्नु पर्नेछ ।

(च) इजाजतपत्र प्राप्त मनिचेञ्जरहरूले आफ्नो कारोवारका लागि आवश्यक पर्ने भारतीय रूपैयाँको मौज्दात आफैले मिलाउनु पर्नेछ ।

(छ) इजाजतपत्र प्राप्त मनिचेञ्जरहरूले भारतीय रूपैयाँ खरीद गरी राष्ट्र बैंक वा बैंक वा भारतीय रूपैयाँको नोटकोष रहेका बैंकमा बुझाउन ल्याएमा राष्ट्र बैंकले तोकेको इ.प्रा. कमिशन पाउनेछन् ।

(ज) मनिचेन्जरले कुनै पनि बैंकसंग सम्झौता गरी सो मार्फत Point of Sale (PoS) मेसिन राख्न सक्नेछ र सो PoS मार्फत सटही सुविधा दिन सक्नेछ ।[४]

**१०. रसीद जारी गर्ने र विवरण राख्ने तरीका :**

(१) मनिचेञ्जरले परिवर्त्य विदेशी मुद्रा खरीद गर्दा अनुसुची-५ बमोजिमको ढाँचामा खरीद रसीद जारी गर्नु पर्नेछ र सोही रसीदको आधारमा अनुसूची-६ बमोजिमको ढाँचामा विदेशी विनिमय सटही विवरण तयार गरी अद्यावधिक रूपमा राख्नु पर्नेछ ।

(२) मनिचेञ्जरहरूले परिवर्त्य विदेशी मुद्रा खरीद गरेको तथा बैंक खातामा जम्मा गरेको कारोवारको दैनिक खरीद/बिक्री रजिष्टर खडा गर्नु पर्नेछ र यसरी तयार गरिएको दैनिक विवरणका आधारमा मासिक तथा वार्षिक विवरण तयार गरी अद्यावधिक रूपमा राख्नु पर्नेछ ।

(३) मनिचेञ्जरहरूले भारतीय रूपैयाँ खरीद बिक्री गरेको तथा बैंक दाखिला गरेको कारोवारको दैनिक खरीद बिक्री अभिलेख राख्नु पर्नेछ ।

**११. विवरण पेश गर्ने तरीका :**

(१) मनिचेञ्जर कारोवार अन्तर्गत भएको परिवर्त्य विदेशी मुद्राको मासिक खरीद विवरण अनुसूची-७ बमोजिमको ढाँचामा र भारतीय रूपैयाँको मासिक खरीद तथा बिक्री विवरण अनुसूची-८ बमोजिमको ढाँचामा तयार गरी काठमाडौं उपत्यकास्थित मनिचेञ्जरले विभागमा र उपत्यका बाहिरका मनिचेञ्जरले राष्ट्र बैंकको जिल्लास्थित कार्यालयमा महिना समाप्त भएको पन्ध्र दिनभित्र अनिवार्य रूपमा पेश गर्नु पर्नेछ ।

(२) उपविनियम (१) बमोजिमको विवरणका अतिरिक्त विभागले समय समयमा माग गरे अनुसारको विवरण पेश गर्नु सम्बन्धित मनिचेञ्जरको कर्तव्य हुनेछ ।

(३) प्रत्येक आर्थिक वर्षको हिसाब कितावको प्रचलित कानूनले निर्धारण गरेको समयावधिभित्र लेखापरीक्षण गराई सोको एक प्रति विभाग/कार्यालयमा पेश गर्नु पर्नेछ ।[५]

**१२. लेखा राख्नु पर्ने :** मनिचेञ्जरहरूले पुँजी, आम्दानी, खर्च, लगायतका कारोवार स्पष्ट देखिने गरी लेखा राख्नु पर्नेछ । यसरी लेखाङ्कन गर्दा नेपाल लेखामानले तोकेका मापदण्डको पालना गर्नु पर्नेछ ।

---

[४] तेस्रो संशोधनबाट थप भएको ।

[५] तेस्रो संशोधनबाट थप भएको ।

## १३. साइन बोर्ड सम्बन्धी व्यवस्था :

(१) इजाजतपत्र प्राप्त मनि चेञ्जरहरूले आफ्नो कारोवार स्थलमा अनुसूची-९ बमोजिमको साइन बोर्ड राख्नु पर्ने छ । साइन बोर्डमा लोगो राख्ने, रङ्ग निर्धारण गर्ने, लम्बाई चौडाइ तथा अक्षरहरूको आकार प्रकार निर्धारण मनिचेञ्जर आफैंले गर्न सक्नेछ ।

(२) निर्धारित साइन बोर्डमा कम्पनीले थप जानकारीमूलक कुनै कुरा राख्नु परेमा विभागको स्वीकृति लिनु पर्नेछ ।

# परिच्छेद - ५
# विविध

## १४. निरीक्षण गर्ने :

(१) राष्ट्र बैंकले आवश्यकतानुसार मनिचेञ्जरको समय समयमा निरीक्षण गर्न सक्नेछ । यस्तो निरीक्षण स्थलगत वा गैर-स्थलगत दुवै हुन सक्नेछ ।

(२) उपविनियम (१) बमोजिम निरीक्षण गर्दा काठमाडौं उपत्यकास्थित मनिचेञ्जरको निरीक्षण विभागबाट र काठमाडौं उपत्यका बाहिरका मनिचेञ्जरको निरीक्षण विभागबाट वा राष्ट्र बैंकको सम्बन्धित जिल्लास्थित कार्यालयबाट गरिनेछ ।

(३) उपविनियम (१) र (२) बमोजिम निरीक्षण गर्दा मुख्यत देहायका विषयहरू हेरिनेछन् :-

(क) मनिचेञ्जरको साईन बोर्ड र इजाजतपत्र स्पष्टसँग देखिने गरी राखे/नराखेका ।

(ख) दैनिक खरीद/बिक्री गरिने भारतीय रूपैयाँ, खरीदमात्र गरिने परिवर्त्य विदेशी मुद्रा र विदेश भ्रमणमा जाने नेपाली नागरिकलाई राहदानी वापतको सटही सुविधाका लागि बिक्री गरिने परिवर्त्य विदेशी मुद्राको विनिमय दर स्पष्टसँग देखिने गरी राखे/नराखेको ।

(ग) इजाजतपत्र तथा सोसँगै दिइएको पत्रमा उल्लेख भएका शर्तहरू पालना गरे/नगरेको ।

(घ) यस विनियम बमोजिम राख्नुपर्ने अभिलेख तथा लेखा राखे/नराखेको, पेश गर्नुपर्ने विवरण पेश गरे/नगरेको र रकमको सुरक्षाको व्यवस्था गरे/नगरेको ।

(ङ) समय समयमा राष्ट्र बैंकबाट जारी गरिएका परिपत्र एवम् निर्देशनको पालना गरे/नगरेको तथा अन्य प्रचलित कानूनको पालना गरे/नगरेको ।

(च) नेपाल लेखामानको मापदण्ड पालना हुने गरी कारोवारको लेखाङ्कन गरे/नगरेको ।

(छ) राष्ट्र बैंकबाट गरिएको निरीक्षण तथा अनुगमनले विगतमा औंल्याएका कैफियतहरू सुधार गरे/नगरेको ।

(ज) राष्ट्र बैंकले निर्देशन दिएका अन्य आवश्यक कुराहरू पालना गरे/नगरेको ।

(झ) सम्पत्ति शुद्धिकरण तथा आतङ्कवादी कार्यमा वित्तीय लगानी सम्बन्धी निर्देशनको पालना गरे/नगरेको ।[६]

(४) .....................[७]

---

[६] तेस्रो संशोधनबाट थप भएको ।

[७] तेस्रो संशोधनबाट हटाइएको ।

**(१४क) निरीक्षण प्रतिवेदनः**[८]

(१) निरीक्षण प्रतिवेदनका आधारमा सम्बन्धित इजाजतपत्रप्राप्त व्यक्तिलाई आवश्यक निर्देशन दिने र/वा कुनै कारवाही चलाउनु पर्ने देखिएमा आवश्यक प्रकृया अगाडी बडाउनेछ ।

(२) निरीक्षण प्रतिवेदनका आधारमा इजाजतपत्रप्राप्त व्यक्तिलाई कुनै प्रकारको कारवाही गर्नु परेमा सात दिनको समयावधि दिई स्पष्टिकरण सोधिने छ । उक्त स्पष्टिकरणको प्रत्युत्तरको आधारमा निर्देशन दिने, सचेत गराउने, नसिहत दिने, चेतावनी समेत दिन सकिनेछ । साथै, प्राप्त स्पष्टिकरणको प्रत्युत्तर सन्तोषजनक नभई विशेष कारवाही गर्नु पर्ने भएमा कारवाहीको किसिम प्रस्ताव गरी थप स्पष्टिकरण सोध्ने र सो स्पष्टिकरणको जवाफ पनि सन्तोषजनक नभएमा नगद जरिवाना गर्ने वा नगद धरौटी जफत गर्ने वा विभागबाट प्रदान गरिएको इजाजपतत्र निलम्बन वा खारेज गर्ने वा इजाजतपत्र खारेज गरी प्रचलित कानून बमोजिम थप कारवाही समेत अघि बढाउन सकिनेछ ।

(३) इजाजतपत्रप्राप्त व्यक्तिले विदेशी मुद्राको अपचलन हुने प्रकृतिको कुनै कारोवार गरेको वा ऐन तथा सो अन्तर्गत बनेका नियम, विनियम तथा राष्ट्र बैंकबाट जारी विनियमावली परिपत्र वा आदेश, निर्देशन विपरीत विदेशी विनिमयको कारोवार गरेको देखिएमा सोको पुष्टि हुने कागजातहरू समेत संलग्न गरी यथाशिघ्र विभागीय प्रमुखलाई प्रतिवेदन दिनु पर्नेछ ।

(४) उपविनियम (३) बमोजिमको कैफियतको प्रकृति हेरी विभागले कारवाही गर्नु पर्ने भए विभागले र नेपाल सरकारको सम्बन्धित निकायको क्षेत्राधिकारभित्र पर्ने भए सो निकायलाई आवश्यक छानविन तथा कारवाहीका लागि लेखी पठाइनेछ ।

(५) उपविनियम (२) बमोजिम कैफियतको प्रकृति एवम् गम्भिरता हेरी जरिवाना गर्नु पर्ने भएमा वा बैंकको नियम, विनियम, परिपत्रको पालना नगरेमा वा पटक पटक तथ्याङ्क समयमा नपठाएमा विभागले रु.१०,०००।- देखि रु.५०,०००।- सम्म जरिवाना गर्न सक्नेछ ।

**१५. सुरक्षाको व्यवस्था मिलाउनु पर्ने :**

(१) मनिचेञ्जरले आफ्नो कारोवारको लागि चाहिने सुरक्षाको निमित्त उपयुक्त सेफ वा क्यास भल्ट प्रयोग गर्नु पर्नेछ र सोको सुरक्षाको व्यवस्था आफैंले मिलाउनु पर्नेछ ।

(२) मनिचेञ्जरले राष्ट्र बैंक वा बैंकमा रकम जम्मा गर्न जाँदा वा लिएर आउँदा सुरक्षाको व्यवस्था आफैंले मिलाउनु पर्नेछ ।

**१६. कारोवारको स्थान परिवर्तनः** सामान्यतया मनिचेञ्जरले आफ्नो कारोवारको स्थान परिवर्तन गर्न पाउने छैन । तर, स्थान परिवर्तन गर्नु नै पर्ने अवस्था परी परिवर्तन गर्दा प्रस्तावित स्थानबाट कारोवार गर्दा सर्बसाधारणलाई बढी सुविधा पुग्न जाने कुरामा राष्ट्र बैंक विश्वस्त भएमा सम्बन्धित मनिचेञ्जरको अनुरोधमा पाँच हजार रूपैयाँ थप दस्तुर लिई स्थान परिवर्तन गर्ने स्वीकृति दिन सक्नेछ ।

**१७. नवीकरण गर्ने :**

(१) मनिचेञ्जरले सामान्यतया इजाजतपत्रको म्याद समाप्त हुनु अगावै सोको नवीकरण गर्नु पर्नेछ । यसरी नवीकरण गर्दा देहाय बमोजिमको वार्षिक शुल्क लिई नवीकरण गरिनेछ :-

(क) भारतीय मुद्राको खरीद/बिक्री कारोवारको लागि दुई हजार रूपैयाँ ।

(ख) परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारका लागि तीन हजार रूपैयाँ ।

---

[८] तेस्रो संशोधनबाट थप भएको/मिलाइएको ।

(ग) खण्ड (क) र (ख) बमोजिमका दुवै कारोवारको लागि पाँच हजार रूपैयाँ ।

(घ) विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा वापत परिवर्त्य विदेशी मुद्रा बिक्री गर्ने कारोवारका लागि थप दुई हजार रूपैयाँ ।

(२) उपविनियम (१) मा जुनसुकै कुरा लेखिएको भएता पनि मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्रको म्याद समाप्त भएको मितिले तीस दिनभित्र नवीकरण गर्न आएमा उपविनियम (१) मा उल्लिखित वार्षिक शुल्क नै लिई इजाजतपत्र नवीकरण गर्न सकिनेछ ।

(३) इजाजतपत्र प्राप्त व्यक्ति/फर्म/कम्पनीले उपविनियम (२) बमोजिमको अवधिभित्र पनि नविकरण नगराएमा इजाजतपत्रको म्याद समाप्त भएको मितिदेखि तीन महिनाभित्र निवेदन दिएमा जरिवाना लिई इजाजतपत्र नविकरण गर्न सकिनेछ । यस्तो जरिवाना रकम नविकरण दस्तुरका अतिरिक्त पहिलो, दोस्रो र तेस्रो प्रत्येक महिनाको लागि रु. ५,०००।- दरले बुझाउनु पर्नेछ ।[९]

तर, यो खण्ड लागु भए पछि पहिलो पटक नविकरणको लागि आउने संस्थाको लागि म्याद नाघेको छ महिनासम्म प्रत्येक महिनाको लागि रु. ५,०००।- का दरले जरिवाना लिई छ महिनाभित्र नविकरण गर्न सकिनेछ ।

(४) मनिचेञ्जरको इजाजतपत्र नवीकरण गर्दा देहाय बमोजिमका कागजातहरू संलग्न गरी आवेदन दिनु पर्नेछ :-

(क) उपविनियम (१) र (२) बमोजिमको दस्तुर बुझाएको सक्कलै भौचर ।

(ख) विनियम ५ बमोजिमको अद्यावधिक धरौटी ।

(ग) घरभाडामा लिई मनिचेञ्जर सञ्चालन गरेको भए घरभाडा सम्बन्धी अद्यावधिक सम्झौतापत्र ।

(घ) वाणिज्य विभागमा दर्ता भएको भए सोको अद्यावधिक निस्सा ।

(ङ) स्थायी लेखा नम्बरको अद्यावधिक प्रमाणपत्र ।

(च) अघिल्लो आर्थिक वर्षको कर चुक्ता गरेको वा कर विवरण आन्तरिक राजस्व कार्यालयमा दाखिला गरेको प्रमाण ।

(५) इजाजतपत्रको नवीकरण काठमाडौं उपत्यकाको हकमा विभागले र उपत्यका बाहिरको हकमा राष्ट्र बैंकका सम्बन्धित जिल्लास्थित कार्यालयले गर्ने छन् ।

(६) ...........[१०]

(७) लगातार तीन वर्ष देखि घाटामा सञ्चालनमा रहेको अवस्थामा कारोवार पारदर्शी नरहेको भन्ने बैंकलाई लागेमा मनिचेन्जरको इजाजतपत्र नविकरण नगर्न सकिने छ ।[११]

## १८. इजाजतपत्रको निलम्बन तथा खारेजी :

(१) मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्रको म्याद समाप्त भएको मितिले तीन महिनाभित्र नवीकरण गराउन वा ग्यारेण्टी वापत राखेको बैंक ग्यारेण्टी/नगद धरौटी फुकुवा गराई पाउन निवेदन दिई सक्नु पर्नेछ । इजाजतपत्रको म्याद समाप्त भएको मितिले तीन महिनाभित्र बैंक ग्यारेण्टी/नगद धरौटी फुकुवाको निवेदन पेश गरेमा सो मितिसम्मको विनियम १७ को उपविनियम (३) बमोजिम जरिवाना असुल गरी फुकुवा गरिनेछ ।

---

[९] तेस्रो संशोधनबाट मिलाइएको ।

[१०] तेस्रो संशोधनबाट हटाइएको ।

[११] तेस्रो संशोधनबाट थप भएको ।

अन्यथा सो म्यादभित्र नविकरण गर्न वा बैंक ग्यारेण्टी/नगद धरौटी फुकुवा गर्न निवेदन नदिएमा नगद धरौटी सम्पुर्ण रकम जफत भई इजाजतपत्र स्वतः रद्द हुनेछ ।[१२]

(२) मनिचेञ्जर कारोवारमा कुनै अनियमितता हुन गएको पाइएमा वा तोकिएका शर्तहरू उल्लंघन भएको पाइएमा कुनै पनि बखत मनिचेञ्जर इजाजतपत्र रद्द गर्ने वा धरौटी तथा नगद धरौटी जफत गर्ने वा दुवै कारवाही गरी प्रचलित कानून बमोजिम अन्य आवश्यक कारवाही समेत गर्न सकिनेछ । उपर्युक्त बमोजिमको कारवाही इजाजतपत्र दिने विभाग वा राष्ट्र बैंकको सम्बन्धित जिल्लास्थित कार्यालयले गर्न सक्नेछ ।

**१९. कारोवार बन्द गर्नेः**

(१) मनिचेञ्जरले कुनै कारणबस आफ्नो कारोवार बन्द गर्न चाहेमा विभाग वा राष्ट्र बैंकका सम्बन्धित जिल्लास्थित कार्यालयको पूर्व स्वीकृति लिनु पर्नेछ ।

(२) मनिचेञ्जर कारोवार बन्द गर्ने निर्णय गर्नु पूर्व उक्त मनिचेञ्जरसँग कसैको लेनदेन तथा अन्य सरोकार भए जानकारीका लागि परिवर्त्य विदेशी मुद्रा समेत खरीद गर्नेको हकमा राष्ट्रियस्तरको दैनिक पत्रिकामा र भारतीय रूपैयाँ मात्र खरीद/बिक्री गर्नेको हकमा स्थानीय स्तरको दैनिक पत्रिकामा पैतीस दिने सार्वजनिक सूचना जारी गरिनेछ र सोको खर्च सम्बन्धित मनिचेञ्जरले नै व्यहोर्नु पर्नेछ ।

**२०. खारेजी र बचाउ :**

(१) नेपाल राष्ट्र बैंक मनिचेञ्जर निर्देशिका, २०६४ खारेज गरिएको छ ।

(२) उपविनियम (१) बमोजिम भए गरेको काम कारवाही यसै विनियमावली बमोजिम भए गरेको मानिनेछ ।

[१२] तेस्रो संशोधनबाट मिलाइएको ।

## अनुसूची- १
**विनियमावलीको विनियम ३ को उपविनियम (२) सँग सम्बन्धित**

नेपाल राष्ट्र बैंक

………………………

……………………… ।

महाशय,

मनिचेञ्जर कारोवार गर्नका लागि देहाय बमोजिमको विवरण तथा कागजात सहित यो निवेदन पेश गरेको छु/छौँ ।

**विवरण**

१. निवेदकको व्यक्तिगत विवरण (नेपाली नागरिकताको प्रमाणित प्रतिलिपि र फोटो समेत) ।

(क) निवेदकको नाम :

(ख) उमेर :

(ग) बाबुको नाम :

(घ) बाजेको नाम :

(ङ) शैक्षिक योग्यता :

(च) व्यापार, उद्योग वा अन्य पेशामा संलग्न भए सोको विवरण :

२. ठेगाना स्थायी :

अस्थायी :

३. मोबाइल/फोन नम्बर :

४. फ्याक्स नम्बर :

५. पोष्ट बक्स नम्बर :

६. मनिचेञ्जर सञ्चालन गर्ने स्थान :

(लोकेशन स्केचसहित पुरा ठेगाना)

७. कारोवारको किसिम :

(क) भारतीय रूपैँयाँ (खरीद/बिक्री)

(ख) परिवर्त्य विदेशी मुद्रा (खरीद मात्र)

(ग) परिवर्त्य विदेशी मुद्राको खरीद मात्र गर्ने वा परिवर्त्य विदेशी मुद्राको खरीद गरी विदेश भ्रमणमा जाने नेपाली नागरिकहरूलाई राहदानी वापतको सटही सुविधा वापत परिवर्त्य विदेशी मुद्रा समेत बिक्री गर्ने ।

(घ) (क), (ख) र (ग) मा उल्लिखित सबै कार्य ।

८. मनिचेञ्जर कारोवार गर्न सैद्धान्तिक सहमति प्राप्त भएमा तोकेको म्यादभित्र मनिचेञ्जर कारोवारको लागि प्रचलित कानून बमोजिम छुट्टै फर्म/कम्पनी दर्ता गरी त्यस बैंकलाई सूचना गर्नेछु ।

९. म/हामी बैंक तथा वित्तीय संस्थासँगको कारोवारमा कालोसूचीमा नपरेको, सरकारी वा सार्वजनिक वा बैंक वा वित्तीय संस्थाको सेवाको पदमा बहाल नरहेको र ऋण तिर्न नसकी साहूको दामासाहीमा नपरेको, मानसिक सन्तुलन ठीक रहेको र प्रचलित कानून वमोजिम नैतिक पतन देखिने फौजदारी अभियोगमा अदालतबाट कुनै सजाय नपाएको व्यहोरा घोषणा गर्दछु/गर्दछौँ ।

उपरोक्त बमोजिमका विवरणहरू सत्य र ठीक छन्, झुट्टा ठहरे प्रचलित कानून बमोजिम सजाय भोग्न तयार छु/छौँ । साथै, यी विवरणका अतिरिक्त अन्य विवरण आवश्यक भएमा तोकिएको अवधिभित्र तोकिए बमोजिम पेश गर्ने व्यहोरा समेत अनुरोध गर्दछु/गर्दछौँ ।

**भवदीय,**
**सही :**
**नाम :**
**मिति:**

**अनुसूची– २**

**विनियमावलीको विनियम ७ को उपविनियम (१) सँग सम्बन्धित**

श्री .....................

......................... ।

विषयः सैद्धान्तिक सहमति पत्र ।

महाशय,

तहाँले ................................ मा मनिचेञ्जर कारोवार गर्ने इजाजतपत्र पाउँ भनी मिति ...................... मा दिनु भएको निवेदन उपर कारवाही हुँदा तहाँलाई मनिचेञ्जर कारोवारको इजाजतपत्र प्रदान गर्ने क्रममा सैद्धान्तिक सहमति प्रदान गर्ने निर्णय भएकोले उपयुक्त स्थानमा तोके बमोजिमको काउण्टर लगायत अन्य व्यवस्था गरी आजको मितिले ३५ दिनभित्र तपसिलमा उल्लिखित प्रकृयाहरू पुरा गरी सम्पर्क राख्न सूचित गरिएको छ ।

निर्धारित समय भित्र प्रकृया पूरा गरी सम्पर्क राख्न नआएको खण्डमा यो सहमतिपत्र स्वतः निस्कृय हुने व्यहोरा यसै पत्रद्वारा जानकारी गराउँदछु ।

तपसिल

१. व्यक्तिगत फर्म/साझेदारी फर्म/कम्पनी दर्ता गरेको प्रमाणपत्र ।

२. साझेदारी फर्म वा कम्पनीको रूपमा दर्ता गरेको भए साझेदार वा शेयरहोल्डरको व्यक्तिगत विवरण ।

३. स्थायी लेखा नम्बरको प्रमाणपत्र ।

४. साझेदारी फर्म भए साझेदारी कबुलियतपत्र र कम्पनी भए प्रबन्धपत्र र नियमावली ।

५. इजाजतपत्रप्राप्त गर्नका लागि तोकिए बमोजिमको धरौटी तथा नगद धरौटी वापतको रकम जम्मा गरेको भौचर ।

६. परिवर्त्य विदेशी मुद्राको खरीद कारोवारको हकमा यस बैंकको स्वीकृत ढाँचा अनुरूपको Foreign Exchange Encashment Receipt (FEER) को नमूना (अनुसूची-५ बमोजिमको) । काठमाडौं उपत्यकाको हकमा उक्त FEER Computer Billing को माध्यमबाट जारी गर्नु पर्ने छ ।

७. इजाजतपत्रको वार्षिक शुल्क वापतको रकम राष्ट्र बैंकको नाफा नोक्सान आम्दानी हिसाब "फुटकर"मा दाखिला गरेको सक्कलै भौचर ।

**भवदीय,**

................................

## अनुसूची- ३

## विनियमावलीको विनियम ७ को उपविनियम (३) सँग सम्बन्धित

शर्तहरू

१. मनिचेञ्जरले इजाजतपत्र प्राप्त गर्नु अघि राष्ट्र बैंकका नाममा विनियम ५ बमोजिमको धरौटी र विनियम ६ बमोजिमको नगद धरौटी यस बैंकबाट तोकिएको खातामा जम्मा गरेको भौचर पेश गर्नु पर्नेछ । विनियम ५ को उपविनियम (२) बमोजिमको बैंक जमानत राखेमा सोको अवधि कम्तिमा १८ (अठाह्र) महिना वा इजाजतपत्रको म्याद समाप्त हुने मिति भन्दा ६ (छ) महिना पछिसम्म बहाल रहने हुनु पर्नेछ ।[१३]

२. परिवर्त्य विदेशी मुद्राको कारोवार गर्दा अनुसूची-५ बमोजिमको ढाँचाको रसीद प्रयोग गर्नु पर्नेछ ।

३. भारतीय रूपैयाँको खरीद/बिक्री गर्दा सोको स्रोत/प्रयोजन उल्लेख गर्नु पर्नेछ ।

४. परिवर्त्य विदेशी मुद्रा खरीद गर्दा राष्ट्र बैंकले समय समयमा तोके बमोजिम खरीद गर्नु पर्नेछ ।

५. भारतीय मुद्राको खरीद बिक्री गर्दा राष्ट्र बैंकले समय समयमा तोके बमोजिम खरीद बिक्री गर्नु पर्नेछ ।

६. शर्त नं.४ र ५ बमोजिम कायम गरेको खरीद/बिक्री दर बोर्डमा सबैले स्पष्टसँग देख्न सक्ने गरी कारोवार गर्ने स्थानमा अनिवार्य रूपमा राख्नु पर्नेछ ।

७. सटही कारोवारको व्यवसाय गर्ने स्थानमा राष्ट्र बैंकले स्वीकृति दिएमा बाहेक अन्य व्यवसाय गर्न पाइने छैन ।

८. सुरक्षित क्यास भल्ट (नगद राख्ने सेफ) हुनु पर्नेछ ।

९. मनिचेञ्जर कार्यालयको लागि प्रयोग हुने घर आफ्नो नभएको खण्डमा कम्तिमा पन्ध्र महिना वा इजाजतपत्रको म्याद समाप्त हुने मिति भन्दा तीन महिना पछिसम्मको घर बहाल सम्झौता गरिएको हुनु पर्नेछ ।

१०. मनिचेञ्जरले आफ्नो कारोवारको निमित्त आवश्यक पर्ने पर्याप्त मौज्दात नराखेको कारणबाट सटही गर्न आउने ग्राहकलाई सटही सुविधाबाट बिमुख गराउन पाइने छैन ।

११. आफ्नो दैनिक कारोवारको सम्पूर्ण विवरणहरूको लेखा स्पष्ट खुल्ने गरी राख्नु पर्नेछ । तत्सम्बन्धी विवरण तोकिए बमोजिमको ढाँचामा इजाजतपत्र प्रदान गर्ने राष्ट्र बैंकको जिल्ला स्थित कार्यालय वा विभागमा महिना समाप्त भएको मितिले पन्ध्र दिनभित्र अनिवार्य रूपमा छिटो साधनद्वारा पठाउनु पर्नेछ ।

१२. परिवर्त्य विदेशी मुद्रा तथा भारतीय रूपैयाँको अवमूल्यन वा पुनर्मूल्यनबाट उत्पन्न हुने सम्पूर्ण लाभ वा हानी मनिचेञ्जर कारोवार गर्ने सम्बन्धित फर्म वा कम्पनी कै हुनेछ । सो वापत कुनै किसिमको क्षतिपूर्ति दिइने छैन ।

१३. आफूले सटही कारोवार गर्दा प्राप्त हुने नगद वा यात्रुचेक जाली वा नक्कली ठहर भएमा सोको सम्पूर्ण जिम्मेवारी मनिचेञ्जर स्वयम्ले लिनु पर्नेछ ।

१४ मनिचेञ्जरले आफ्नो कारोवार संचालन गर्न नगदै अमेरिकी डलर पाँच सयसम्म वा सो बराबरको अन्य परिवर्त्य विदेशी मुद्रा पेट्टीक्यासको रूपमा राख्न सक्नेछ ।

१५. नेपाल राष्ट्र बैंक ऐन, २०५८, विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९ तथा सम्पत्ति शुद्धिकरण ऐन, २०६४ र सो अन्तर्गत जारी गरिएका नियम, विनियम, आदेश, निर्देशन, परिपत्र, सूचनाको पालना गर्नु सम्बन्धित मनिचेञ्जरको कर्तव्य हुनेछ ।

---

[१३] तेस्रो संशोधनबाट मिलाइएको ।

१६. राष्ट्र बैंकले मनिचेञ्जर कारोवारको स्थलगत वा गैर स्थलगत निरीक्षण कुनै पनि बखत गर्न सक्नेछ ।

१७. मनिचेञ्जर कारोवारमा कुनै अनियमितता हुन गएको पाइएमा वा तोकिएको शर्तहरू उल्लङ्घन भएको पाइएमा कुनै पनि बखत मनिचेञ्जर कारोवारको इजाजतपत्र रद्द गर्ने वा वित्तीय जमानत तथा नगद धरौटी जफत गर्ने वा दुवै कारवाही गरी प्रचलित ऐन, नियम बमोजिम अन्य आवश्यक कारवाही समेत गर्न सकिनेछ ।

१८. परिवर्त्य विदेशी मुद्राको सटही कारोवार गर्दा यात्रुचेक वा नगद खरीद गर्दा एक पटकमा प्रति व्यक्ति अमेरिकी डलर पाँच हजारसम्म वा सो बराबरको हुने अन्य परिवर्त्य विदेशी मुद्राभन्दा बढी खरीद गर्न पाइने छैन ।

१९. मनिचेञ्जरहरूले खरीद गरेको विदेशी मुद्रा खरीद गरेको भोलिपल्ट नै बैंक दाखिला गर्नु पर्नेछ । उक्त दिन सार्वजनिक विदा परेमा सो पछि कार्यालय खुलेको दिन बैंक दाखिला गर्नु पर्नेछ ।

२०. परिवर्त्य विदेशी मुद्राको कारोवार गर्ने मनिचेञ्जरले आफ्नो कारोवार गर्ने स्थानमा सबैले देख्ने गरी निम्न बमोजिम सूचना टाँस्नु पर्नेछ ।

IMPORTANT INFORMATION

1. As per prevailing Nepalese Law, it is illegal to deal in Foreign Exchange with a person other than an authorized person.
2. Please obtain proper receipt whenever you exchange your money.
3. The Nepalese Rupees balance remaining with you (not for Nepalese and Indian nationals) will be converted back into US dollar at the departure exchange counter at the Tribhuvan International Airport at the time of departure, on submission of encashment receipt.
4. The receipt stampped "USED" will not be considered for refund.

अनुसूची - ४

**विनियमावलीको विनियम ७ को उपविनियम (३) सँग सम्बन्धित**

**NEPAL RASTRA BANK**

**CENTRAL OFFICE**

**FOREIGN EXCHANGE MANAGEMENT DEPARTMENT**

**License for Money Changer**

**(Convertible Currencies/Indian Rupees)**

**License No.: NRB (Fx.) MC .../ ......**
This Money Changer License has been issued to M/s (Name) **.................................... (Address) ....................................,** in pursuant to sub section (1) of section 3 of **Foreign Exchange (Regulation) Act, 2019**. The License holder may exchange foreign currency from foreigners and Neplese citizens who have right to hold foreign currency within the country as per the terms and conditions mentioned below as well as given instructions attached herewith.
**Place of business**: ............................., ........................
**Valid Untill:** ..........................................
Type of Transaction :
Terms and Conditions :

1. The company must follow Foreign Exchange (Regulation) Act, 2019 Assets (Money Laundering Prevention Act, 2064, and other Acts and Rules, Bylaws, Regulation and circulars issued there under by any competent authority including Nepal Rastra Bank from time to time.
2. This License must be displayed at the place of business. The License must only be used at the place of business where this authorization applies.
3. The company must be submit monthly statements to Nepal Rastra Bank and other information as required by the Nepal Rastra Bank time to time.
4. Renewal must be made before .......................... Renewal with stipulated penalty, can be made within .................................... After that date the license will be cancelled.
5. Daily buying and selling rate of convertible foreign currencies must be displayed at the place of business.
6. This license is not transferable.

**For and on the behalf of**
**Nepal Rastra Bank**

| | | |
|---|---|---|
| **Baluwatar, Kathmandu.** | **(..........................)** | **(.......................)** |
| **Date: ...........................** | **Assistant Director** | **Deputy Director** |

अनुसूची – ५

विनियमावलीको विनियम १० को उपविनियम (१) सँग सम्बन्धित

**(Money Changer's Name and Address)**

**FOREIGN EXCHANGE ENCASHMENT RECEIPT (FEER)**

**Receipt No.:** **DATE:** …………………

We hereby certify that, we have purchased today foreign currency as mentioned below from

Mr/Mrs/Miss …………………………………… Passport No.:…………… Nationality…………………...........HomeAddress………………………………

<table>
<tr><td rowspan="2">Particulars Cash/T.C.</td><td rowspan="2">Currency Amount</td><td>Rate</td><td>Rupee Equivalent</td><td rowspan="2">Authorized dealer's Name, address, Stamp and Signature</td></tr>
<tr><td>Total Rs.</td><td></td></tr>
</table>

Foreign Currency in Words… … … … … … … … … … … … … …... … … … …
… …... … … … … … … …... … … … … … … …... … … … … … … …... … … … …
… …... … … … … … … …... … … … … … … …... … … … … … … …... … … … …

______________________

Customer's Signature: Local Address: ……………………….............

**PLEASE READ IMPORTANT INFORMATION OVERLEAF**

**ENDORSMENT TO BE MADE BY AUTHORISED DEALER ACCEPTING THEIR BILL IN RUPEES**

| S.N. | Date | Kind of Service | Bill | | Balance after Billing in Rs. | Authorised dealer's name, address, stamp and Signature |
|---|---|---|---|---|---|---|
| | | | No. & date | Rs. | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |

**IMPORTANT INFORMATION:**

1. As per prevailing Nepalese Law, it is illegal to deal in Foreign Exchange with a person other than an authorized person.
2. Please obtain proper receipt whenever you exchange your money.
3. The Nepalese Rupees balance remaining with you (not for Nepalese and Indian nationals) will be converted back into US dollar at the departure exchange counter at the Tribhuvan International Airport at the time of departure, on submission of encashment receipt.
4. The receipt stampped "USED" will not be considered for refund.

**THIS EXCHANGE RECEIPT SHOULD BE CAREFULLY PRESERVED WHEN YOU ARE IN NEPAL.**

**अनसूची– ६**

**विनियमावलीको विनियम १० को उपविनियम (१) सँग सम्बन्धित**

**(Money Changer's Name & Address)**

**Foreign Exchange Encashment Receipt Statement**

**Period:** From …………………………… To …………………… **Date:** ……………….

| Date | FEER No. | Amounts Purchased From | Cheque/Cash | Amount Sold To *Bank* | Balance at the end of the Day | Remarks |
|---|---|---|---|---|---|---|
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |
| | | | | | | |

## अनुसूची – ७
## विनियमावलीको विनियम ११ को उपविनियम (१) सँग सम्बन्धित

मितिः

श्री नेपाल राष्ट्र बैंक
...............................................
............................................... ।

**विषयः – मासिक कारोवार विवरण।**

महोदय,

...............…….….….... साल ….….….................... महिनामा ......................…….….….…...................... ले गरेको विदशी मुद्राको कारोवार निम्नानुसार भएको व्यहोरा पेश गरेको छु।

आम्दानी

| मुद्रा | नगद | ट्राभलर्स चेक | क्रेडिट कार्ड | अन्य | कुल |
|---|---|---|---|---|---|
| अमेरिकी डलर | | | | | |
| अन्य मुद्रा | | | | | |
| (क)......................... | | | | | |
| (ख) ...................... | | | | | |
| (ग) ......................... | | | | | |
| (घ) ........................ | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |

तयार गर्ने
नामः
दस्तखतः

चेक गर्ने
नाम
दस्तखतः

द्रष्टव्य : (१) विदेशी मुद्रा आर्जन बैंक दाखिला भएको प्रमाणहरू अनिवार्य रूपले संलग्न हुनु पर्नेछ।
(२) उपरोक्त विवरण महिना समाप्त भएको पन्ध्र दिनभित्र अनिवार्य रूपले पेश गर्नुपर्नेछ।

**अनुसूची –८**
**विदेशी मुद्रा खरीद तथा बिक्रीको मासिक विवरण**
**(विनियमावलीको विनियम ११ को उपविनियम (१) सँग सम्बन्धित)**
**भा.रू. खरीद/बिक्रीको दैनिक विवरण**

**मनिचेञ्जरको नाम :** ..........................................................................................................................................
**ठेगाना :** ...............................................................
**अवधि : मिति** ............................**साल** ...............................**महिना** ....................**गतेदेखि** ........................**मसान्तसम्म**

| मिति | खरीद | | जम्मा | विक्री | | जम्मा |
|---|---|---|---|---|---|---|
| | पार्टीसँग | बैंकसँग | | पार्टीलाई | बैंकलाई | |
| १ गते | | | | | | |
| २ गते | | | | | | |
| ३ गते | | | | | | |
| ४ गते | | | | | | |
| ५ गते | | | | | | |
| ६ गते | | | | | | |
| ७ गत | | | | | | |
| ८ गत | | | | | | |
| ९ गते | | | | | | |
| १० गते | | | | | | |
| ११ गत | | | | | | |
| १२ गते | | | | | | |
| १३ गते | | | | | | |
| १४ गते | | | | | | |
| १५ गते | | | | | | |
| १६ गते | | | | | | |
| १७ गते | | | | | | |
| १८ गते | | | | | | |
| १९ गत | | | | | | |
| २०गत | | | | | | |
| २१ गते | | | | | | |
| २२ गते | | | | | | |
| २३ गत | | | | | | |
| २४ गते | | | | | | |
| २५ गते | | | | | | |
| २६ गते | | | | | | |
| २७ गते | | | | | | |
| २८ गते | | | | | | |
| २९ गते | | | | | | |
| ३० गते | | | | | | |
| ३१ गते | | | | | | |
| ३२ गते | | | | | | |
| जम्मा रकम | | | | | | |

**मनिचेञ्जरको तर्फबाट पेश गर्ने जिम्मेवार**
**आधिकारिक दस्तखत :**

**एकाउण्टेण्ट** **व्यवस्थापक**

## अनुसूची–९

## मनिचेञ्जर कम्पनीहरूले राख्नु पर्ने साईन बोर्डको नमूना

**(विनियमावलीको विनियम १३ को उपविनियम (१) सँग सम्बन्धित)**

NRB, Licens No................. Co. Re. No................

------------------------ मनिचेञ्जर कम्पनी प्रा.लि.

-----------------------, ------------------, नेपाल

----------------- Money Changer Company Pvt. Ltd.

------------------------, Nepal

Phone No.:.......................................

लोगो राख्न सक्ने
अनिवार्य छैन

नेपाल राष्ट्र बैंकबाट इजाजतपत्र प्राप्त
Licensed by: Nepal Rastra Bank (Central Bank of Nepal)